श्री आचार्य नागार्जुन कृतः

# चतुःस्तवः

( अनुवाद तथा सारांश सहित )



सम्पादक

श्री दिव्यवज्र वज्राचार्य

# चतुः स्तवः

## नेपाली अनुवाद तथा सारांश सहित

सम्पादक

श्री दिव्यवज्र वज्राचार्य

प्रकाशक

अखिल नेपाल महायान बौद्ध समाज

विक्रम सम्बत् २०४३ साल जेष्ठ २४ गते

प्रथम संस्करण— १,००० प्रति

मूल्यः— ६।—

मुद्रकः— आनन्द प्रिण्टिङ्ग प्रेस (प्रा.) लि., बागबजार काठमाडौं । फोनः– २–२१९२५

# प्रकाशकीय

भगवान् गौतम बुद्धले व्यक्ति विशेषको रूचि हेरी विभिन्न व्यक्तिलाई विभिन्न तरिकाद्वारा आफ्नो दर्शन बोधगम्य बनाउन महायान, श्रावकयान र प्रत्येक बुद्धयानका भेदले उपदेश दिनु भयो भन्ने कुरामा विद्वानहरू विश्वास गर्दछन । उक्त तीन यानमध्ये महायानको रहस्यमय पक्ष बोध गराउने यो चतुःस्तव सरल तरिकाबाट शून्यता भावना गराउन शून्यतावादी आचार्य श्री नागार्जुनले भगवान्को अलौकिक स्तुतिको रूपमा प्रस्तुत गरेको बुझिन्छ । बहुसंख्यक महायानीहरूले यो चतुःस्तवलाई अद्यापि घर-घरमा ठूलो श्रद्धा एवं भक्तिसाथ पाठ गर्दै आइरहेको पाइन्छ ।

हाल यी स्तवःहरू धारणी संग्रह आदि ग्रन्थहरूमा यता उता छरिएर रहेको पाइएता पनि चतुःस्तवको संयुक्त स्तव आज हामीहरू कहाँ दुर्लभ मात्र होइन अप्राप्य नै भइसकेको छ । यस्तो दुर्लभ यी स्तवहरूलाई विभिन्न ग्रन्थहरूबाट खोजी क्रमबद्ध रुपमा मिलाई टुटे-फुटेको पद पदलाई केलाएर पाठान्तर सच्याई महिनौं परिश्रम गरी हाम्रा परम पूज्य गुरू श्री दिव्य वज्र वज्राचार्यज्यूले यो ग्रन्थको संस्कृत श्लोक, नेपाली सारांश र नेपाली अनुवाद सहित सम्पादन गरेर यस अखिल नेपाल महायान बौद्ध समाजलाई प्रकाशन गर्ने अभिभारा दिनु भएको छ । आफ्नै सिद्धान्तका आधारशीला यो ग्रन्थलाई प्रकाशन गर्न पाउँदा महायान बौद्ध समाजलाई अपार हर्ष एवं गौरव लाग्नु स्वाभाविक छ । साथै यस संस्थाको महत्वमाथि प्रकाश पार्ने अमूल्य

कृषि दिइ समाज सेवामा अग्रसर हुन चाहने व्यक्तिले भावना नगरी नहुने शून्यता सिद्धान्तलाई बुझाउन हरदम प्रयत्नशील हुने हाम्रा परमपूज्य गुरुमा ठूलो आभारी व्यक्त गर्दै बहुसंख्यक समाजसेवी, जिज्ञासु, धार्मिक व्यक्तिहरूले पनि यो ग्रन्थबाट ज्ञान हासिल गर्न सकून भन्ने ठूलो आशा लिइएको छ ।

अन्तमा, यो ग्रन्थ प्रकाश गर्न चाहिने सम्पूर्ण आर्थिक सहयोग गरी आफ्ना दिवंगत सदस्य श्री ऋद्धिवज्रको सुगति कामना गर्ने पियूषवर्षी औषधालय परिवारलाई पनि सधैं यस्तो सुकार्यमा सहयोग गरी रहन सकून् भनी साधुवाद व्यक्त गरिन्छ ।

अध्यक्ष

सानुमानन्द वज्राचार्य

अखिल नेपाल महायान बौद्ध समाज

# मेरा दुइ शब्द

स्वर्गीय हाम्रा परम पूज्य पिता श्री दुर्गा वज्र (माहिला काजी) तथा माता श्री तीर्थ कुमारीका ६ छोराहरू दिव्य वज्र, पद्ममान वज्र, सिद्धि वज्र, ऋद्धिवज्र, मन वज्र, धन वज्र तथा छोरी मञ्जरी देवी हुन। तिनीहरूमध्ये ४ वर्षको उमेरमा व्रतवन्धको ४ दिन पछि मेरो भाइ पद्ममान वज्र विफर (मसूरिका) रोगबाट परलोक भएको कुरा म सपना जस्तै संम्झन्छु। हाल सो भाइको स्मृतिको रूपमा केवल एक 'मुक्क' (वज्राचार्यहरूले पूजा गर्दा लगाउने मुकुट) हाम्रो घरमा शेष रहेको छ।

मेरा पिताज्यूको आयुर्वेदप्रति अगाध श्रद्धा भएको हुंदा वहाँले स्वर्गीय पूज्य गुरु श्री देवीदत्त पराजुलीको चरणमा म तथा मेरा भाइ सिद्धि वज्र र ऋद्धि वज्रलाई समेत संस्कृत पढाउन समर्पण गर्नु भएको थियो। साथै विहान बेलुका स्कूलको पाठ पढाउन अध्यापकको पनि प्रवन्ध गरि दिनु भएको थियो। जसको फलस्वरूप हामीहरूले केही संस्कृत जान्ने अवसर पायौं। म १८ वर्ष हुंदा मेरा पूज्य पिताज्यू श्री दुर्गा वज्र ३७ वर्षको उमेरमा आफ्ना वृद्ध पिता श्री नीजवज्र तथा माता बालकुमारी (माया) र मेरी विव्हल आमा तीर्थकुमारी सहित सकल परिवारलाई छोडी १९९४ साल मार्ग ४ गते परलोक हुनुभयो। मेरा पिताजी परलोक भएको ६ महीना पछि मेरी वहिनी २ वर्षकी मञ्जरी देवी पनि १९९४ चैत्र महीनामा परलोक भईन्। यसरी पुत्र शोक तथा नातिनी मञ्जरी देवीको पनि वियोगले मेरी बज्यै ७२ वर्षकी बाल कुमारी पनि मन्दाग्नि; अरुचि तथा

अम्लपित्तले पीडित भई १९९५ साल चैत्र शुक्ल पूर्णिमाको दिन परलोक हुनु भयो।

यस्तो परिस्थितिमा पनि हतोत्साह तथा तथा विचलित नभइ मेरा बाज्ये श्री नील बज्र र मेरी आमा श्री तीर्थकुमारीले हामीहरूलाई घरमै संस्कृत पढाउन गुरुहरूको प्रबन्ध मिलाई पालन पोषण गरेर हुर्काएको कुरा हामी बिर्सन सक्दैनौं।

यसको फलस्वरुप मेरा भाइ श्री ऋद्धिबज्रले संस्कृतमा साहित्याचार्य गर्न सफल भए। त्यसबेला आयुर्वेदलाई प्रचार गर्ने हाम्रो उद्देश्य थियो। त्यस कारण चरक संहितामा प्रयुक्त जडीबुटीको शब्द संग्रह र रस हृदयमा प्रयुक्त जडी बुटीको शब्द संग्रह गर्न भाइऋद्धिबज्र व्यस्त थिए। साथै जुद्धसडकमा पनि उनले पियूषवर्षी औषधालयको शाखा चलाएका थिए। हुन त त्यसबेला सो शाखा सुचारुरूपले चल्न सकेन। त्यसकारण भाइ ऋद्धि बज्रको झुकाव त्यहाँका साहूहरूको संगतले व्यापारमा पनि केही पर्न गयो। तथापि व्यापारमा पनि ऋद्धि बज्रलाई सन्तोष भएन।

भाइ ऋद्धिबज्रले ४१ वर्षको उमेरमा माध्यमिक शास्त्र पढी रहेको कुरा म सम्झन्छु। अनि यसको लगतै पछि एकदिन भाइ ऋद्धिबज्रले अब म बौद्ध धर्म प्रचार गर्छु भनी आफ्नो विचार व्यक्त गरे। धर्म प्रचार गर्नु असल हो तर धर्म प्रचार गर्न हतारिनु हुन्न भनी मैले सुझाव दिएको थिएँ। केही महीनापछि २०३१ सालमा बौद्ध धर्म प्रचार सम्बन्धी भाइ ऋद्धि बज्रले लेखेको पत्र मसंग हालसम्म सुरक्षित छ। त्यसबेला बौद्ध धर्म प्रचार गर्न पाम्प्लेट बाँडिएको थियो तथा आफ्नै घरमा प्रज्ञापारमिता सम्बन्धी प्रवचन पनि गरेथे। श्रोतागणहरूमध्ये मैले चिनेका श्री स्व० धर्मानन्द शाक्य, श्री स्व० छिव्यरत्न तुलाधर आदि थिए। त्यसपछि श्री दिव्य रत्न तुलाधरको घरमा पनि भाइ ऋद्धिबज्रले प्रज्ञापारमिता सम्बन्धी प्रवचन गरेका थिए। त्यस बेलासम्म म बुद्ध धर्मको नाममा नमोरत्न त्रयाय मात्र भन्न जान्दथें।

यसरी केही वर्ष बौद्ध धर्म प्रचारमा भाइ ऋद्धिवज्रको समय बितेको थियो। साथै हाम्रो कुलपरम्परागत आयुर्वेद-उपचार सेवामा पनि उनी लाग्दै आएका थिए। विशेष गरी केही वर्ष यता नियमित रूपमा दिल दिएर रोगीहरूको सेवा कार्यमा उनी संलग्न भएथे। यसरी भाइ ऋद्धिवज्र केही वर्ष आयुर्वेदको सेवा गर्दागर्दै उग्ररूपको यकृद् रोगबाट पीडित भई २०४२ साल माघ १४ गते उनकी धर्मपत्नी चन्द्र देवी तथा एक मात्र सुपुत्री पुष्पादेवी सहित हामी सकल परिवारलाई शोक स्तब्ध तथा विह्वल बनाइ परलोक भए।

भाइ ऋद्धिवज्रको प्यारो विषय माध्यमिक दर्शन भएकोले उनको कामना पूर्ति होस् भन्ने लक्ष्य लिई यो चतुःस्तव प्रकाश गर्ने इच्छा उत्पन्न भएको हो।

श्री भगवान् बुद्धको चतुःस्तवमध्ये लोकातीतस्तव उही सहोदर भाइ स्वर्गीय श्री ऋद्धिवज्रको सुगति कामना गरी अनुवाद सहित प्रकाश गरेको हुँ।

श्री भगवान् बुद्धको निरौपम्यस्तव प्रज्ञापारमिताको श्रध्दा गर्ने मेरा कल्याण मित्र स्व० श्री धर्मानन्द शाक्य जनबहालको सुगति कामना गरी प्रकाश गरेको हुँ।

श्री भगवान् बुध्दको अचिन्त्यस्तव प्रज्ञापारमिताको भक्ति गर्ने कल्याण मित्र स्व० दिब्यरत्न तुलाधर (जेठा साहू) बनेपाको सुगति कामना गरी प्रकाश गरेको हुँ।

श्री भगवान बुद्धको परमार्थस्तव श्री स्वयम्भू, श्री गुह्येश्वरी तथा आर्यावलोकितेश्वरको मन्दिर मच्छेन्द्रबहालमा अखण्ड दीप बाल्ने तथा काठमाडौंका वज्राचार्य संघलाई अध्ययन गर्न तःदेबहालको घर बुद्धपाठशालाको रूपमा दान गर्ने तथा लुम्बिनीमा नेपाली शैलीको घण्टा राख्ने मेरी बज्यै बाल कुमारीकी बहिनी स्व० भयापुनानी वज्राचार्यको सुगति कामना गरी प्रकाश गरेको हुँ।

यो चतुःस्तव नित्य पाठ गर्नु होस्, अर्थ बुझ्न सारांश तथा नेपाली अनुवाद हेर्नुहोस्। साथै चतुःस्तवको ज्ञातव्य विषय पनि पढ्नु होस्। अनि

यसरी ज्ञान लाभ गरी प्रज्ञापारमिता भावनाद्वारा जनहित गर्न सकूँन् भन्ने म कामना गर्दछु ।

अन्तमा यो स्तोत्र प्रकाश गर्ने अभिभारा लिने अखिल नेपाल महायान बौद्ध समाजको प्रगतिको कामना गर्दै यो स्तोत्र छापी गर्ने काममा सहयोग गर्ने श्री दयानन्द शाक्य तथा छोरी श्री सुमति वैद्यलाई पनि म आफ्नो शुभकामना व्यक्त गर्दछु । साथै लोकातीतस्तवको शुद्ध पाठान्तर हेर्न दिई मद्दत गर्ने अ.ने.म. बौद्ध समाज, काठ्मे शाखा अध्यक्ष श्री धर्मानन्द वज्राचार्यलाई पनि मेरो साधुवाद छ ।

२०४३ साल, २४ जेष्ठ
महाबौद्ध मासंगल्ली

दिव्य वज्र वज्राचार्य

# चतुस्तवको ज्ञातव्य विषय

चतुस्तव श्री भगवान् बुद्धको चार असाधारण तथा अलौकिक गुण वर्णन गर्ने लोकातीतस्तव (अलौकिक), निरौपम्यस्तव ( लौकिक उपमा दिन नसकिने गुणको स्तोत्र ), अचिन्त्यस्तव (मनः बुद्धिले चिन्तन मनन गर्न नसकिने गुणको स्तोत्र) र परमार्थस्तव (निर्वाण मोक्ष सम्बन्धी गुणको स्तोत्र) हरु हुन्।

"बुद्धो भवेयं जगतो हिताय" जगतको हित गर्ने म बुद्ध बन्न सकुं भन्ने महाकरुणाले ओतप्रोत उद्देश्य लिई महायान अघि सरेको देखिन्छ। महायानको मूल भावना प्रज्ञापारमिता भावना हो। सो भावनाद्वारा प्रज्ञापारमिता (शून्यता) को साक्षात्कार गर्न सके क्लेश क्षीण भई मोक्ष (निर्वाण) लाभ हुन्छ। तथा उपाय कौशल स्वरुप महाकरुणालाई अङ्गाली जनहित गरे बुद्धत्व लाभ गर्न सफल हुन्छ भन्ने महायानको धारणा छ। जनहित गर्न, आतङ्कवाद रोक्न, विश्वशान्ति स्थापना गर्न तथा धर्म समन्वय ल्याउन देश काल सुहाउने, सबै वर्ग अटाउने यान (मार्ग वा उपाय) नै महायान हो। यसमा कुनै पवित्र धर्म नअटाउला भन्न सकिंदैन। अतः महायानको केही प्रमुख विषय यहाँ उल्लेख गरिन्छ।

भगवान् बुद्धको उपदेश दुइ प्रकारका छन्। त्यही कुरा व्यक्त गर्न मध्यमक शास्त्र २४-८,६ श्लोकमा यसरी उल्लेख गर्नु भएको छ-

द्वे सत्ये समुपाश्रित्य बुद्धानां धर्मदेशना।
लोक संवृति सत्यं च सत्यं च परमार्थतः ॥८॥

येऽनयोर्न विजानन्ति विभागं सत्ययोर्द्वयोः ।

ते तत्त्वं न विजानन्ति गम्भीरं बुद्धशासने ॥६॥

संवृति सत्य र परमार्थसत्य यी दुइ सत्यको आधारमा श्री भगवान् बुद्धले धर्मदेशना गर्नु भएको हो। यी दुइ सत्यको भेद नजान्ने व्यक्तिले बुद्धशासनको गम्भीर तत्त्व बुझ्न सक्दैन।

यसकारण श्री भगवान् बुद्धको विशुद्ध धर्मको आशय बुझ्न संवृति सत्य र परमार्थसत्यको अर्थ बुझ्नु अत्यावश्यक छ। संक्षेपमा संवृतिसत्यको लक्षण बोधिचर्यावतार ९ परिच्छेदको २ श्लोकमा यसरी उल्लेख गरेको पाइन्छ।

बुद्धेरगोचरस्तत्त्वं बुद्धिः संवृतिरुच्यते।

बुद्धिले जानिने कुरालाई संवृतिसत्य भनिन्छ। बुद्धिले नजानिने अनिर्वचनीय तत्त्व नै परमार्थसत्य हो। व्यावहारिक तथा लौकिक सत्यलाई नै संवृति सत्य भनिन्छ। अविद्या, मोह, विपर्यास तथा बुद्धि यी संवृति सत्यका पर्यायवाची शब्दहरू हुन। हेतुप्रत्ययद्वारा बनेका प्रतीत्यसमुत्पन्न सबै कृत्रिम वस्तुहरूको वर्णन संवृति सत्यमा नै हुन्छन्। तथ्य संवृति र मिथ्या संवृतिका भेदले संवृतिसत्य पनि दुइ प्रकारका हुन्छन्। स्वस्थ छ इन्द्रियले ज्ञान गरेका विषयहरूलाई तथ्य संवृतिसत्य (साँचो लौकिक ज्ञान) भनिन्छ। अस्वस्थ इन्द्रियको ज्ञान तथा भ्रमात्मक ज्ञान मिथ्या संवृति भनिन्छ।

परमार्थ सत्य अकृत्रिम वस्तु हो। जसलाई बुझे पछि जन्म जन्मान्तरको सबै प्रकारका वासना सहित रागादि क्लेश नाश हुन्छ। प्रज्ञापारमिता, अद्वयज्ञान, निःस्वभावता, शून्यता, तथता, भूतकोटि, धर्मधातु यी सबै परमार्थसत्यका पर्याय हुन्।

संसारका सबै वस्तुहरूमा संवृतिसत्यको रूप र परमार्थ सत्यको रूप रहेका हुन्छन्। कसैले वस्तुको संवृतिसत्यको रूपलाई सत्य भनी विश्वास गर्छन् भने योगीले परमार्थ सत्यको रूपलाई सत्य मान्दछन्। संवृति सत्यलाई साँचो मान्दैनन्। यही कुरो अचिन्त्यस्तवको ३५ श्लोकमा यसरी व्यक्त गरेको छ— इन्द्रिय ज्ञान नै

परमार्थज्ञान भए, परमार्थ ज्ञानको आवश्यकता नै हुँदैन। स्त्री पुरुषको शरीर मलमूत्र बनाउने मेशीन हो तथा शरीरमा मलमूत्र हुन्छन् शरीर अशुचि हो भनी सबै जनता जान्दछन् तैपनि हामी शरीरलाई चोखो संझी कति प्यार गर्छौं ? यस्तो लौकिक ज्ञान अर्थात अशुचिलाई शुचि, दुःखलाई सुख, अनित्यलाई नित्य, अनात्मालाई आत्मा सम्झनु मिथ्या संवृतिसत्य हो। तथ्य संवृतिसत्य होइन।

श्री भगवान् बुद्धले पञ्चस्कन्ध, द्वादशायतन, अष्टादश धातु र दान, शील, क्षान्ति, वीर्य ध्यान पारमिताहरू वर्णन गर्नु भएको छ तथा सबै पदार्थहरू क्षणिक हुन् क्षणभङ्गुर हुन्, अनित्य हुन् दुःख हुन्, अनात्म हुन् भनी उपदेश दिनु भएको छ। यी सबै तथ्य संवृत्तिसत्यको अनुसार बताउनु भएको हो। उपर्युक्त दान, शील आदि तथ्य संवृत्तिसत्य निर्वाण तथा बुद्धत्व लाभ गर्ने पुण्य संभार हुन् तथा उपायहरू हुन्।

श्री भगवान बुद्धको स्तुति चतुस्तवमा केही गुण तथ्य सवृतिसत्यको अनुरूप स्तुति गरेकोछ भने केही गुण परमार्थ सत्यको अनुरूप वर्णन गरिएको छ। यसरी प्रायः सबै स्तुतिहरूमा विरोधाभास अलङ्कार प्रयोग गरेको पाइन्छ। जस्तै पहिलो स्तुतिमा श्री भगवान् बुद्ध लोकातीत (लोकसंग संबन्ध नभएको) हुनुहुन्छ तथा लोकहित गर्न सधैं चिन्तित हुनुहुन्छ भनी उल्लेख गरेको छ। यसो हुँदा लोकातीत भए लोकहित गर्न चिन्तित नहुनु पर्ने हो भन्ने विरोधाभास देखिन्छ। यस कारण लोक तथा लोकहित गर्न चिन्तित हुनु आदि संवृतिसत्य अनुरूप स्तुति गरेको हो। परमार्थसत्य अनुसार लोक तथा लोकहित गर्न चिन्तित हुनु आदि पनि आपेक्षिक नै हो, प्रतीत्य समुत्पन्न वस्तु नै हो, शून्य नै हो भनी लोक तथा कर्मफलमा लिप्त नभैरहने हुँदा लोकातीत हुनुहुन्छ भनेको हो।

हुन त परमार्थ सत्यको जति वर्णन गरे पनि संवृतिसत्य नै हुन आउँछ। तापनि संवृतिसत्य उपाय हो परमार्थसत्य उपेय हो (उपायद्वारा पाइने वस्तु हो)। व्यावहारिक (ज्ञान संवृतिज्ञान) नभईकन परमार्थज्ञान हुन सक्दैन। परमार्थको ज्ञान नभईकन निर्वाण लाभ हुँदैन भनी श्री नागार्जुन भन्नु हुन्छ—

व्यवहारमनागम्य परमार्थो न देश्यते ।

परमार्थमनागम्य निर्वाणं नाधिगम्यते ॥(म.शा.२४ २४)

दान, शील आदि मात्र होइन भौतिक विज्ञान, रसायन विज्ञान, चिकित्सा विज्ञान, गणित विज्ञान आदि जति पनि आधुनिक विज्ञानहरू छन् ती सबै तथ्य संवृत्तिसत्यका रुपहरू हुन। ती उपर्युक्त ज्ञानमा पनि परमार्थ सत्य लुकेर रहेका हुन्छन्। त्यस ज्ञानलाई खारेर परमार्थ ज्ञानको रूप साक्षात्कार गर्ने विधि नै प्रज्ञापारमिता भावना हो। निस्वार्थ भावले जगत हित गर्नु नै प्रज्ञापारमिता भावनाको उद्देश्य हो । यो चतुस्तव केवल स्तुतिमात्र नभई यसमा प्रज्ञापारमिता भावना कसरी गर्ने ? भन्ने विधि पनि स्पष्ट निर्देशन गरेको पाइन्छ । किनभने बहुजनहित नगरी केवल निर्वाण लाभ गर्ने उद्देश्य महायानको होइन। त्यसकारण माध्यमिकहरूको परमार्थं तत्त्व के हुन् भन्ने बोध गर्नु आवश्यक हुन आउँछ।

न सन्नासन् न सदसन् नचाप्यनुभयात्मकम् ।

चतुष्कोटिविनिर्मुक्तं तत्त्वं माध्यमिका विदुः ॥

(बोधि. टि. पृ. १७४)

(१) सच्चा होइन (२) झूठा पनि होइन (३) सच्चा र झुठ पनि होइन (४) सच्चा र झुठ पनि नभएको होइन। यी चार कोटि (अन्त वा भेदभावले रहित वस्तु नै परमार्थसत्य वा परमार्थतत्त्व हो भनी माध्यमिकहरू मान्दछन् ।

जस्तै (१) कपडा सच्चा होइन त्यो त धागोहरूको समूह हो, (२) कपडा झूठ होइन यदि कपडा झुठ भएको भए धागोले लुगा बनाउन नभए जस्तै लुगा बनाउन नहुने होला । त्यसकारण झुठ पनि होइन। (३) त्यसो भए कपडा सच्चा तथा झूठ पनि होइन किनभने सच्चा र झूठ परस्पर विरोधी कुरा एउटै ठाउँमा नहुने हुनाले कपडा सच्चा तथा झूठा पनि होईन। (४) कपडा सच्चा तथा झूठ पनि नभएको पनि होईन किनभने पहिलो कोटि र दोस्रो कोटिमा उल्लेख गरे झैं छ पनि छैन पनि भन्ने पनि बोध हुन्छ। अतः बुद्धिगम्य चारकोटि (भेदभाव) नभएको तत्त्व नै मध्यमा प्रतिपद हो। यही परमार्थसत्य तथा शून्यता हो । यसरी चतुष्कोटि रहित: आदिशान्त

अनुत्पन्न, अनिरुद्ध, अनुच्छेद, अशाश्वत, स्वभाव भएको आकाश झैं आसक्तिरहित परमार्थतत्त्वको रुप पनि सकल विश्वमा व्याप्त छ।

यसरी अनिर्वचनीय तत्त्वलाई पनि वचनद्वारा व्यक्त गर्न नागार्जुनले शून्यताको विषयमा अचिन्त्यस्तवको ४० श्लोकमा यसरी उल्लेख गर्नु भएको छ-

यः प्रतीत्यसमुत्पादः शून्यता सैव ते मता।
तथाविधश्च सद्धर्मस्तत्समश्च तथागतः॥

श्री भगवान् बुद्धको मतमा प्रतीत्यसमुत्पाद, शून्यता र सद्धर्म तथा तथागत भन्नु एउटै कुरो हो। यी शब्दहरूले परमार्थसत्यलाई नै बुझाउँछ। यसकारण शून्यताको अर्थ बुझ्न प्रतीत्यसमुत्पादलाई बुझ्नु अनिवार्य छ।

## प्रतीत्यसमुत्पाद

अविद्या, संस्कार, विज्ञान, नामरूप, षडायतन, स्पर्श, वेदना, तृष्णा, उपादान, भव, जाति, जरामरणसम्मका अङ्गले युक्त भएको भव चक्रलाई द्वादशाङ्ग प्रतीत्यसमुत्पाद भनिन्छ। अविद्यादेखि तृष्णासम्मका अङ्ग भएकोलाई अष्टाङ्गप्रतीत्यसमुत्पाद भनिन्छ। वेदनादेखि जरामरणसम्मका अङ्ग भएकोलाई षडङ्गप्रतीत्यसमुत्पाद भनिन्छ। तृष्णादेखि जरामरणसम्मका अङ्गलाई पञ्चाङ्गप्रतीत्यसमुत्पाद भनिन्छ। "अस्मिन् सति इदं भवति, अस्योत्पादात् इदम् उत्पद्यते" इत्यादिलाई एकाङ्गप्रतीत्यसमुत्पाद भनिन्छ। यो भएमा यो उत्पन्न हुन्छ, यो उत्पन्न भएकोले यो उत्पन्न हुन्छ अर्थात् अविद्या भएमा संस्कार उत्पन्न हुन्छ, अविद्याको उत्पत्तिले संस्कार उत्पन्न हुन्छ। यही लक्षण सबै प्रतीत्यसमुत्पन्न वस्तुमा लागू हुन्छ। उपर्युक्त प्रतीत्यसमुत्पादका कुरा विशुद्धिमग्गोको टीकाले पनि उल्लेख गरेको छ। अविद्या आदि बाह्र अङ्ग प्रतीत्यसमुत्पाद पनि हुन्छन् तथा प्रतीत्यसमुत्पन्न पनि हुन्छन्। अर्थात अविद्याको अपेक्षा संस्कार प्रतीत्य-समुत्पन्न हुन्छ भने संस्कार विज्ञानको अपेक्षा प्रतीत्यसमुत्पाद हुन्छ सोहि कुरो विशुद्धिमग्गोको टीकामा यसरी उल्लेख गरेको छ-

'कामञ्चायं पटिच्चसमुप्पादपटिच्चसमुप्पन्नसमञ्ञा पितापुत्त समञ्ञा विय अपेक्खा सिद्धाः हेतु फल धम्मेसु पन यथाक्कमं ववत्थिता।"

हुन त प्रतीत्यसमुत्पाद र प्रतीत्यसमुत्पन्न शब्दको व्यवहार बाबु र छोरो भने जस्तै अपेक्षाबाट सिद्ध हुने शब्द हुन्। हेतु धर्म (कारण स्वभाव) देखाउनुलाई प्रतीत्यसमुत्पाद भनिन्छ भने कारणबाट बनेका फल धर्म (कार्य स्वभाव) देखाउनुलाई प्रतीत्यसमुत्पन्न शब्द प्रयोग गरेको पाइन्छ।

माध्यमिकहरू पनि प्रतीत्य, प्राप्य, अपेक्ष्य, समुत्पादः, प्रादुर्भाव प्रतीत्यसमुत्पादः अर्थात् हेतु र प्रत्ययको अपेक्षाले उत्पन्न हुनुलाई प्रतीत्यसमुत्पाद भन्छन्। जस्तै तीन अङ्कले अङ्कित तीन रेखाहरू छन्।



यी रेखाहरू मध्ये २ अङ्कको रेखा १ अङ्कको अपेक्षा छोटो छ, भने ३ अङ्कको रेखाको अपेक्षा लामो छ। यसकारण २ अङ्कको रेखा न लामो हो न त छोटो नै हो। यसरी अपेक्षा गरेर सिद्ध हुने वस्तुलाई नै शून्य भनेको हो। यसकारण प्रतीत्यसमुत्पाद शून्यता हो। अपेक्षा भन्नु र कल्पना भन्नु यौटै कुरो हो। जो कल्पना हो त्यो सच्चा होइन। जो सच्चा होइन, त्यसलाई शून्य भनेर व्यवहार गरिन्छ भन्ने व्यक्त गर्न श्री नागार्जुन भन्नु हुन्छ —

नाममात्रं जगत्सर्वमित्युच्चै र्भावितं त्वया।
अभिधानात्पृथग् भूतमभिधेयं न विद्यते ॥३५॥
कल्पनामात्रमित्यस्मात्सर्वधर्माः प्रकाशिता।
कल्पनाप्यसती प्रोक्ता यया शून्यं विकल्प्यते ॥३६॥

[अचिन्त्यस्तव]

यसरी राम, श्याम, बुद्ध आदि सबै जगत् नै नाम मात्र हुन्। नामदेखि भिन्नै कुनै वस्तु छैन। नाम भनेको कल्पना हो। कल्पना सच्चा होइन। त्यसकारण शून्य भनी कल्पना गर्न बाध्य भएको हो। जस्तै—

यदा नापेक्ष्यते किञ्चित् कुतः किञ्चित्तदा भवेत् ।
यदा नापेक्ष्यते दीर्घं कुतो ह्रस्वादिकं भवेत् ॥१२॥

[अचिन्त्यस्तव]

कुनै वस्तुको अपेक्षा नगरी कुनै वस्तु उत्पन्न हुँदैन । जस्तै लामोको अपेक्षा नगरी छोटो भन्ने व्यवहार हुनै सक्दैन भन्ने कुरो माथि नै उल्लेख गरिसकेको छ ।

यसरी स्व पर; अस्ति नास्ति, एक अनेक, सम्यक् मिथ्या, संक्लेश व्यवदान, शाश्वत उच्छेद, बद्ध मुक्त, उत्पन्न अनुत्पन्न, ज्ञान ज्ञेय, यी सब परस्परमा आपेक्षिक हुन्, काल्पनिक हुन् अतः शून्य हुन् भन्ने माध्यमिकहरूको विचार हो ।

जब ज्ञान ज्ञेय दुवै शून्य हुन् भन्ने विश्वास उत्पन्न हुन्छ तब यो विश्व नै निःस्वभाव हो भन्ने विश्वास उत्पन्न हुन्छ । यो निस्वभावत्व देशना नै परमतत्त्व हो भनी श्री स्तोत्रकार भन्नु हुन्छ—

ज्ञाने सति यथा ज्ञेयं ज्ञेये ज्ञानं तथा सति ।
यदोभयमनुत्पन्नमिति बुद्धं तदास्ति किम् ॥
एतत्तत्परमं तत्त्वं निःस्वभावत्वदेशना ।
भावग्रहगृहीतानां चिकित्सेयमनुत्तरा ।

ज्ञानको अपेक्षा ज्ञेय हुन्छ भनै ज्ञेयको अपेक्षा ज्ञान हुन्छ । जब यी दुवै आपेक्षिक हुन्, शून्य हुन, अनुत्पन्न हुन् भन्ने दृढ भावना हुन्छ । अनि उसको आसक्ति रहँदैन । जति हामी भाव पदार्थहरू देख्छौं यी देखेका सच्चा होइनन् । त्यसकारण हामीहरूलाई भाव पदार्थ नामक भूत लागेको छ । अर्थात् भाव पदार्थको आसक्ति हामीमा छ । त्यो भूत हटाउने अति उत्तम चिकित्सा नै श्री भगवान् बुद्धको निःस्वभावत्वदेशना हो । यही देशनालाई श्रद्धापूर्वक भावना गर्न सके निर्वाण (मोक्ष) चाहने निर्वाण हुन र निःस्वार्थभावले जनहित गरी बुद्ध हुन चाहने व्यक्ति बुद्ध हुन सक्छ ।

दान गर्नु, शील पालना गर्नु, क्षान्ति सहनु, जनहित गर्न सधैं तत्पर भई वीर्य पालन गर्नु, ध्यान गर्नु यी पाँच दानादिपारमिता संवृतिसत्य हुन् । यी पारमिता

पालन गर्दा निःस्वार्थ भावले पालना गर्नु नै निःस्वभावता भावना गर्नु हो, प्रज्ञा-पारमिता भावना गर्नु हो।

जब सम्म भाव पदार्थ सच्चा हो भनी भावग्राही ( निमित्तग्राही ) हुन्छौं तबसम्म म, मेरो भन्ने हाम्रो आसक्ति छुट्न सक्दैन। स्वार्थ त्याग गर्न सकिंदैन। यसकारण सबै भाव पदार्थहरू आपेक्षिक हुन्, काल्पनिक हुन्, सच्चा होइनन्, शून्य हुन् भनी भावना बढाउन यी चतुस्तवले प्रेरणा दिएको देखिन्छ।

जति भौतिक सुख साधनका विषयहरू छन् ती सबै संवृत्ति सत्यमा नै अन्तर्भाव हुन्छन्। जस्तै राजनीतिमा मात्र होइन धर्ममा विजयी हुन पनि बहुमतको भोट चाहिन्छ। सो बहुमतको भोट प्राप्त गर्ने चार उपाय श्री भगवान बुद्धले आज्ञा गर्नु भएको छ।

भोट प्राप्त गर्ने ती चार उपायमध्ये दानको ठूलो महत्त्व छ। यसको व्याख्या गर्नु म आवश्यक ठान्दिन। तर श्री भगवान बुद्धको विचार अनुसार दान पनि दुई प्रकारका हुन्छन् – फलाशाको दान र निःस्वार्थको दान। फलाशाको दान क्लेशयुक्त नै हुन्छ। प्रज्ञापारमितायुक्त दान अर्थात् निःस्वार्थ दानको फल शान्तियुक्त तथा आतङ्करहित हुन्छ। बहुमतको भोट प्राप्त गर्ने दोस्रो उपाय प्रियवचन हो। यसले ठूला साना सबैलाई आकर्षण गर्ने हुन्छ। तर प्रियवचन अविद्या तथा असत्यरूपी क्लेशयुक्त हुनु हुँदैन। क्लेशयुक्त प्रियवचनको फल क्लेशयुक्त नै हुन्छ; भोट पनि चिर स्थायी हुँदैन।

बहुमतको भोट प्राप्त गर्ने तेस्रो उपाय अर्थचर्या हो। अर्थात् जुन व्यक्तिलाई जुन वस्तुको आवश्यकता छ त्यो वस्तुको बन्दोवस्त गरिदिनुलाई अर्थचर्या भनिन्छ। रोगीको निमित्त डाक्टर वैद्य तथा औषधिको सुविधा मिलाइ दिनु; मुद्दा मामिला भएका व्यक्तिलाई न्याय दिलाउनु वकिल आदिको प्रबन्ध गरिदिनु तथा वृत्ति नभएकालाई वृत्ति दिलाई दिनु, अध्ययन गर्न चाहनेलाई अध्ययन गर्न सुविधा मिलाइ दिनु आदि अर्थचर्याद्वारा पनि बहुमतको भोट प्राप्त गर्न सकिन्छ। स्वार्थले गरेको अर्थचर्याको भन्दा निःस्वार्थभावको अर्थचर्याको फल शान्ति तथा चिर स्थायी नै हुन्छ। चार्‌हौं बहुमतको भोट प्राप्त गर्ने उपाय समानार्थता हो। जाव तथा पद, ज्ञान तथा शीलाचार सम्बन्धी ठूलो सानो भनी भेदभाव नगर्नु नै समानार्थता हो। यसबाट कति बहुमत प्राप्त हुन्छ भन्ने कुरो व्यक्त गर्नु पर्ला जस्तो म देख्दिन। यही समानार्थताको अभावले नै अशान्ति, आतङ्क राग द्वेषको

सृजना हुन्छ । जसले भेदभाव छोडि समानार्थतालाई अङ्गालेको हुन्छ त्यसको निमित्त धार्मिक भोट पइरिन्छ । यसमा सन्देह छैन । हुन त राजनीतिमा बहुमत प्राप्त गर्न साम, दान, दण्ड, भेद यी चार उपाय बताएका छन् । तर श्री भगवान् बुद्धले दण्ड र भेद नीतिलाई परित्याग गर्नु भएको छ ।

यसरी पुण्य गरे आतङ्करहित शान्ति सुव्यवस्था सुख समृद्धि हुन्छ । अपुण्य गरे आतङ्क, अशान्ति, अव्यवस्था र दुःख हुन्छ भनेर नै दान, शील, क्षान्ति, वीर्य, ध्यान सम्बन्धी उपदेशहरू प्रचुर मात्रामा श्री भगवानले गर्नु भएको छ । यी सबै उपदेश संवृतिसत्य कै आधारमा दिनु भएको हो । यसैबाट बहुजनहित, बहुजन सुख हुन्छ तर ती दानादि पुण्यमा म, मेरो भन्ने आसक्ति पनि रहने हुँदा स्वार्थविहीन नहुने हुनाले दानादि पुण्य गर्दा पनि प्रज्ञापारमिताको भावना हुनु पर्दछ । अनि मात्र निःस्वार्थ दानादि पुण्यको फल हुन्छ । अर्थात् अर्हत्त्व तथा बुद्धत्व आदि फल प्राप्त हुन्छ भन्ने महायानको भाव हो । त्यसकारण दान, शील, क्षान्ति, वीर्य, ध्यान आदि पारमिता संवृतिसत्य उपाय हुन्; परमार्थसत्य उपेय हुन् अर्थात् उपायद्वारा प्राप्त गर्न सकिने हुन् । तर प्रज्ञापारमिता (शून्यता) मात्र भावना गर्छु भनी दानशीलादि पुण्य तथा जनहित गर्ने भावना नलिई रहनु हुँदैन भन्ने व्यक्त गर्न श्री आर्यदेवले यसो भन्नु भएको छ-

शून्यता पुण्यकामेन वक्तव्या नैव सर्वदा ।

ननु प्रयुक्तमस्थाने जायते विषमौषधम् ॥

[चतुशतक पृ. २१]

दान, शीलादि पुण्य कर्म गरी जन सेवा गर्न चाहने व्यक्तिले सधैं शून्यताको कुरा मात्र गरी हिंड्नु उचित होइन । नाकको रोगमा कानको औषधि दिंदा धोका हुने हुँदा त्यो औषधि विष सरह नै हुने हुन्छ । त्यसकारण जनसेवा गर्दा अहङ्कार आदि स्वार्थ तथा आसक्ति उत्पन्न नहोस् भनेर नै शून्यताको भावना गर्नु परेको हो । चतुस्तवमा परमार्थसत्यलाई नै प्राधान्य दिएको छ भन्दैमा दान शीलादि संवृतिसत्यको महत्त्व छैन भनेको होइन भन्ने कुरो बिर्सनु हुंदैन ।

# लोकातीत स्तवको
# सारांश

बुद्ध बन्न लोकातीत गुण उत्पन्न गर्नु पर्छ। जुन लोकातीत गुणहरू यस प्रकार छन्—

जगतहित् गर्ने बुद्ध बन्न सकुं भन्ने व्यक्तिले लोकमा आसक्त हुनु हुँदैन भन्ने लोकातीत गुण (१)

हाम्रो शरीरमा भूत भौतिक रूपस्कन्ध छ, सुख दुःख अनुभव गर्ने वेदना स्कन्ध छ, सुख भए मन पराउने राग, दुःख भए मन नपराउने द्वेष तथा सुख, दुःख अव्यक्त भए अन्योलमा पार्ने मोह आदि संस्कार स्कन्ध पनि छन्; यो वस्तु यो हो भनी जान्ने चिन्तन मनन गर्ने विज्ञान स्कन्धहरू पनि छन्। यी पञ्चस्कन्धलाई प्राणीहरू म मेरो भनी ग्रहण गर्दछन्। अतः यसलाई पञ्चउपादान स्कन्ध भनिन्छ। पाङ्ग्रा, धुरा, छत आदिको समूहलाई रथ भने झैं उपर्युक्त रूपादि स्कन्धलाई म मेरो भन्ने सत्त्वलाई नै जीव प्राणी भनेको हो वास्तविक सत्त्व भन्ने छैन भनी सत्व प्राणीमा आसक्त नभई सत्व प्राणी उपर महाकरुणा राख्ने लोकातीत गुण। (२)

फेनपिण्डुपम सूत्रमा रूपस्कन्ध फिंजको डल्लो जस्तो, वेदना स्कन्ध पानीको फोका जस्तो, संज्ञास्कन्ध मृगतृष्णा जस्तो, संस्कारस्कन्ध केराको थाम जस्तो, विज्ञान माया (इन्द्रजाल नाटक) जस्तो भनी पञ्चस्कन्धको सार तथा अस्तित्व छैन भने जस्तै लोकातीतस्तवमा पनि पञ्चस्कन्धहरू माया मरीचि, गन्धर्वनगर, सपनां जस्तै हुन्, सच्चा होइनन् भनी भावना गर्ने लोकातीत गुण।(३)

कारणद्वारा उत्पन्न भएको वस्तु कारण नभए पछि उत्पन्न नहुने हुँदा संसारका सबै वस्तुहरू ऐनामा देखिने प्रतिविम्ब समान हुन भनी भावना गर्ने लोकातीत गुण।(४)

चतुर्महाभूत आँखाले देखिने होइन। चतुर्महाभूतले बनेको रुप आँखाले कसरी देखिने हुन्छ भनी रूपको निमित्त ग्रहण नगर्ने लोकातीत गुण।(५)

अनुभव गरिने वेदनीय वस्तु नभईकन वेदना नहुने भएकोले वेदना निःस्वभाव हो काल्पनिक हो भनी भावना गर्ने श्री भगवान् बुद्धको लोकातीत गुण। (६)

आगो भन्ने नाउँ र आगो भन्ने वस्तु भिन्नै नभए आगो भन्नासाथ मुखमा पोल्नु पर्ने हो। नाउं र वस्तु यदि भिन्नै भए अर्थ नबुझ्नु पर्ने हो। त्यसकारण संज्ञा स्कन्ध पनि निःस्वभाव हो भनी भावना गर्ने लोकातीत गुण। (७)

व्यवहारमा कर्ता कर्म माने तापनि कर्ता र कर्म आपेक्षिक हुँदा निःस्वभाव हुन् भनी भावना गर्ने लोकातीत गुण। (८)

कर्ता, भोक्ता, पुण्य, अपुण्य यी सबै प्रतीत्यसमुत्पन्न हुन, आपेक्षिक हुन्। अपेक्षाबाट बनेको वस्तु काल्पनिक हुन् सच्चा होइन भनी भावना गर्ने लोकातीत गुण। (९)

ज्ञेय (जानिने वस्तु) र विज्ञान (जान्ने मन) पनि आपेक्षिक हुन् त्यस कारण ज्ञान र ज्ञेय पनि निःस्वभाव हुन् भनी भावना गर्ने लोकातीत गुण। (१०)

लक्ष्य र लक्षण पनि आपेक्षिक हुन्। तिनीहरू पनि निःस्वभाव हुन् भनी भावना गर्ने लोकातीत गुण। (११)

लक्ष्य र लक्षण नभएको अनिर्वचनीय तथा शान्त स्वरूप भएको यो संसार हो भनी भावना गर्ने लोकातीत गुण। (१२)

सत् वस्तु उत्पन्न हुने होइन, असत् वस्तु पनि उत्पन्न हुने होइन, सत् तथा असत् वस्तु पनि उत्पन्न हुने होइन, त्यस्तै स्वतः वस्तु उत्पन्न हुने होइन, परतः उत्पन्न हुने पनि होईन, न त स्वत र परत नै वस्तु उत्पन्न हुन्छ भनी भावना गर्ने लोकातीत गुण। (१३)

स्थिर भएर रहेको सद् वस्तु नाश हुने होइन। त्यसकारण सद् असद् आपेक्षिक हुन् काल्पनिक हुन् भनी भावना गर्ने लोकातीत गुण। (१४)

भाव पदार्थ र भाव पदार्थको नाश पनि काल्पनिक हुन् भनी भावना गर्ने लोकातीत गुण। (१५) (१६)

कारण न बिग्री कन कार्य उत्पत्ति हुँदैन। बिग्रे को कारणबाट पनि कार्य (कुनै वस्तु) उत्पन्न हुने होइन। जस्तै बिउ नबिग्री अङ्कुर उत्पन्न हुने होइन। बिग्रे को बिउले अङ्कुर उत्पन्न हुने पनि होइन, त्यसकारण कुनै कारणबाट उत्पन्न भएको वस्तु सपना जस्तै माया (इन्द्रजाल) जस्तै वस्तु उत्पन्न हुन्छ। अतः यो जगत संसार नै काल्पनिक हुन, सच्चा होइनन् उत्पन्न भएको होइन भनी भावना गर्ने लोकातीत गुण। (१७) (१८) (१९)

नित्य वस्तुको गति हुँदैन। त्यस्तै अनित्य वस्तुको पनि गति हुँदैन। त्यसकारण मनुष्यगति आदि गति स्वप्ना समान हुन् भनी भावना गर्ने लोकातीत गुण। (२०)

यो संसार स्वयंकृत पनि होइन, परकृत पनि होइन, अहेतुक पनि होइन केवल हेतुप्रत्ययबाट उत्पन्न भएको प्रतीत्यसमुत्पन्न शून्य हो भनी भावना गर्ने लोकातीत गुण। (२१)

सबै भाव पदार्थहरू हेतुप्रत्ययको अपेक्षाले उत्पन्न भएको देखिन्छ। त्यस्ता वस्तु देखिए; सुनिए तापनि सच्चा होइनन् भनी भावना गर्ने लोकातीत गुण। (२२)

सबै भाव पदार्थहरू शून्य हुन् भनी भावना गरे पनि शून्यतामा पनि आसक्त नभई भावना गर्ने लोकातीत गुण। (२३)

सबै भाव पदार्थहरूको आफ्नो ईहा (चेष्टा) हुदैन तथा स्वतन्त्र छैन। इन्द्रजाल जस्तै हेतु प्रत्ययबाट उत्पन्न हुने हुँदा सबै वस्तुहरू शून्य हुन्, निःस्वभाव हुन् भनी भावना गर्ने लोकातीत गुण। (२४)

श्री भगवान् बुद्धले कुनै नयाँ कुरो उत्पन्न गर्नु भएको पनि छैन, न त कुनै वस्तु निरोध नै गर्नु भएको छ। त्यसकारण पहिले जस्तो थियो त्यस्तै पछि पनि तथता (शून्यता तथा प्रतीत्यसमुत्पाद) रहि नै रहने छ भनी भावना गर्ने गुण। (२५)

उपर्युक्त भगवान बुद्धहरूको भावनालाई नबुझीकन अनिमित्त विमोक्ष साक्षात्कार गर्न सकिँदैन। अनिमित्त साक्षात्कार बिना मोक्ष (निर्वाण) लाभ गर्न सकिँदैन। त्यसकारण महायानमा संपूर्ण अनिमित्त साक्षात्कार गर्ने उपदेश दिइएको छ। (२६, २७)

यसरी श्री भगवान् बुद्धको स्तुति गरेर लाभ भएको पुण्यले सबै प्राणीले अनिमित्त विमोक्ष लाभ गर्न सकुन।

— लोकातीत स्तव समाप्त —



# निरौपम्यस्तवको सारांश

श्री भगवान् बुद्धको निम्न लिखित गुणको उपमा कसैसङ्ग दिन सकिन्नः-

सबै भाव पदार्थको आफ्नो अस्तित्व (स्वभाव) छैन भनी भावना गर्दा सन्मार्गबाट विचलित भई निःस्वार्थभावले जनहित गर्न सकिन्छ भन्ने गुण। (१)

कुनै भाव पदार्थ सच्चा होइन भनी भावना गर्दा निमित्त ग्रहण नहुने हुँदा बुद्धको चक्षु उत्पन्न भई सत्य साक्षात्कार गर्न सकिने गुण। (२)

परमार्थसत्य (निर्वाण) को दृष्टिमा न बोद्धा (बुझ्ने व्यक्ति) छ, न त बोद्धव्य (बुझ्नु पर्ने विषय) नै हुन्छ तैपनि (श्री भगवान् बुद्धको परम दुर्बोध धर्मता (प्रतीत्य-समुत्पाद) लाई बुझ्ने गुण। (३)

उदय र व्ययलाई समान भावना गरी अनुत्तर पद प्राप्त गर्ने श्री भगवान बुद्धको गुण। (४)

भव संसार र निर्वाणलाई समता भावना गरी परम शान्ति लाभ गर्ने गुण। (५)

रागादि संक्लेश र क्लेशविशुद्धिलाई समता भावना गरी परम विशुद्ध हुने गुण। (६)

परमार्थसत्यको दृष्टिमा धर्मोपदेश गरे पनि एक अक्षर पनि बोलें भन्ने आसक्ति नहुनु श्री भगवान बुद्धको गुण। (७)

श्री भगवान् बुद्धको चित्त आकाश समान भएको हुँदा पञ्चस्कन्ध अष्टादश धातु, द्वादशायतन आदिमा आसक्त नहुने गुण। (८)

परमार्थसत्यको दृष्टिमा सत्त्व प्राणी मनुष्य छ भन्ने भाव नहुने भएतापनि दुःखी प्राणी उपर महाकरुणा उत्पन्न हुने गुण । (९)

सुख दुःख, आत्मा अनात्मा, नित्य, अनित्य आदि आपेक्षिक भेद भावमा आसक्त नहुने गुण । (१०)

कुनै भाव पदार्थ उत्पन्न हुँदा यहाँबाट आयो तथा नाश हुंदा यो पदार्थ यहाँ गई थुप्रिन गयो भनी भेदभाव नगर्ने भगवान्‌को गुण । (११)

परमार्थसत्यको दृष्टिमा श्री भगवान् बुद्ध सबै पदार्थहरूको पछि लागेको छ तापनि स्थिर भई रहने तथा धर्मकाय भईकन पनि जन्मलिने आदि अचिन्त्य गुण । (१२)

भव र निर्वाण, शब्द र प्रतिध्वनि जस्तै न एक्कै हो न त भिन्नै हो, जन्म तथा मरण पनि न एक्कै हो न त भिन्नै हो, भनी भावना गर्ने भगवान् बुद्धको गुण । (१२)

यो भव सागर न शाश्वत हो, न त उच्छेद हो, तथा न लक्ष्य हो न त लक्षण नै हो। यो त केवल सपना तथा जादू जस्तै मात्र हो भन्ने श्री भगवान् बुद्धको गुण । (१३)

कल्प कल्पदेखि अभ्यास गरेर आएको वासनाको रूपमा रहेको क्लेशलाई निर्मूल पारेर पनि क्लेशद्वारा नै अमृत तत्त्व लाभ गर्न सक्ने श्री भगवान्‌को गुण । (१४)

रूपको आफ्नो अस्तित्व नभएकोले लक्षण छैन भनी श्री भगवान्‌ले आज्ञा भए पनि बत्तीस लक्षणले युक्त भएको शरीर भक्तहरूलाई दर्शन दिन सक्ने गुण ।

हामी जस्ता व्यक्तिले देखेका रूपलाई रूप भनिदैन । धर्म दृष्टिले देखिएको रूप नै देखिएको भनिन्छ । धर्मता (शून्यता) अनिर्वचनीय भएको हुनाले श्री भगवान बुद्धको धर्मकाय न खोक्रो छ न त मांसादिमय नै छ तैपनि आकाशमा इन्द्र धनु देखिए जस्तै श्रद्धालु भक्तजनलाई दर्शन दिन सक्ने गुण । (१७ - १८)

श्री भगवान् बुद्धको धर्मकायमा न रोग तथा अशुचि आदि छ न भोक प्यास नै छ । तैपनि लोक व्यवहार सिकाउन लोकमा मिलेर व्यवहार गर्ने गुण ।(१९)

श्री भगवान बुद्धको न कुशल अकुशल कर्महरू छन् न त कर्मफल नै भोग गर्नु पर्छ। तैपनि पूर्वजन्ममा यस्तो गरेको थिएँ त्यही फल मैले भोगिरहेछु भनी आफ्नू कर्मप्लोति (कर्मविपाक) आज्ञा गर्ने गुण। (२०)

धर्मधातु (निर्वाण) को दृष्टिमा श्रावकबोधि, प्रत्येकबोधि, सम्यक् संबोधिको भेद छैन तापनि जनताको आशय हेरी सत्यमा प्रवृत्त गराउन तीन प्रकारको यान उपदेश गर्ने श्री भगवान्को गुण। (२१)

श्री भगवान् बुद्धको धर्मकाय नित्य छ, ध्रुव छ, मङ्गलमय छ तापनि विनीत गर्न योग्य व्यक्तिलाई "यसो गरे निर्वाण होइन्छ" भनी निर्वाण भएर देखाउन सक्ने गुण। (२२)

श्री भगवान् बुद्ध निर्वाण भइ सके तापनि बुद्ध लीला देख्न चाहने भक्तहरू-लाई असंख्य लोक धातुहरूमा आफ्नू रूप दर्शन दिन सक्ने श्री भगवान्को गुण। (२३)

परमार्थसत्यको दृष्टिमा श्री भगवान् बुद्धको "जनहित गर्छु", भलाइ गर्छु" भन्ने चिन्तन मनन हुँदैन तापनि निरन्तर जनहित गर्ने जस्ता बुद्ध कृत्य गरिरहने असाधारण गुण। (२४)

यी उपर्युक्त गुणहरूको उपमा अरू कुनै देव, मनुष्य सङ्ग दिन नसकिने हुनाले स्तोत्रकार श्री नागार्जुनले यसलाई निरौपम्यस्तव (अनुपमस्तोत्र) भनी नामकरण गरेको देखिन्छ।

## निरौपम्यस्तव समाप्त

# अचिन्त्य स्तवको
# सारांश

श्री भगवान् बुद्धमा अचिन्त्यगुणहरू रहेका हुन्छन् । जुन गुण हाम्रो मन मस्तिष्कले चिन्तन मनन गर्न सकिँदैन । अचिन्त्यस्तवमा दिइएका यही गुणहरू यहा सङ्कलन गरिएका छन्—

दुइ वा अनेक कारणहरू (हेतु प्रत्ययहरू) संपन्न भई भाव पदार्थ बनेका हुन्छन् । त्यस्ता पदार्थहरूको आफ्नो निजी स्वभाव हुँदैन, स्वतः हुँदैन भनी निस्वभावत्व देशना गर्नु श्री बुद्ध भगवान्‌को अनुपम तथा अचिन्त्य गुण हो । [१]

श्रावक यानमा सत्त्व, प्राणी छैन भनी पुद्‌गल नैरात्म्यको देशना गरेको हुन्छ । महायानमा भने जति भाव पदार्थहरू छन् ती पनि निःस्वभाव भएको हुँदा वास्तवमा छैन भनी धर्म नैरात्म्यको देशना गरेको हुन्छ किनभने काठका टुक्राहरू मिली मेच तथा टेबुलहरू बन्दछन् । यी मेच टेबुलहरूको काठका टुक्रा भन्दा भिन्नै आफ्नू अस्तित्व छैन । त्यसकारण मेच टेबुल पनि शून्य हो भनी भावना गर्ने गुण । [२–४]

एक शब्द (आवाज) बाट सयौं प्रतिध्वनि उत्पन्न भए झैं तथा जादुबाट रूमाललाई परेवा आदि बनाए झैं पानी नभए पनि पानी जस्तो देखिने मृगतृष्णा झैं यी वैभवशाली भव संसारको सृष्टि भएको हो । जादु मृगतृष्णा, गन्धर्वनगर (आकाशमा देखिने विभिन्न दृश्यहरू) ऐनामा देखिने प्रतिबिम्ब तथा सपनाहरू नभएको तथा नदेखिएका होइनन् । त्यस्तै कारण समूहहरू जुन आउँदा बनेका सबै

पदार्थहरू पनि कृत्रिम हुन्, सच्चा होइनन् । यो सम्पूर्ण विश्व पनि त्यस्तै कृत्रिम हुन् । सच्चा होइनन् । यस्तो विश्वलाई संवृत्तिसत्य भनिन्छ । केटाकेटीहरूलाई छकाउन यो मुट्ठीमा मिठाइ छ भनी देखाएको रित्तो मुठी समानको यो विश्व हो, सच्चा होइन भनी सम्झन सक्ने गुण । [४- ५- ६-७]

जुनसुकै कृत्रिम वस्तुहरूलाई विभिन्न नामकरण गरेतापनि ती वस्तुहरू भएका होईनन् । ती वस्तुहरू हालका हुन्, पुराना हुन् तथा पछि बन्ने हुन् भनी कल्पना गर्नु बढिया छ । किनभने जुनसुकै वस्तु पनि आफसे आफ बन्ने होइन । अरू कुनै पराई वस्तुबाट बन्ने पनि होइन, न त आफू र पराइ मिली उत्पन्न हुने हो । वस्तु उत्पन्न हुनुलाई जुन वस्तुको जुन हेतु प्रत्यय (कारण समूह) हो त्यसैबाट मात्र बन्छ । त्यस्तो कारण समूहबाट बनेको वस्तु न सच्चा हो न सच्चा होइन, न त सच्चा पनि झूठ पनि हो भनूँ । यसरी कुनै वस्तु उत्पन्न भएकै होइन भने त्यस्तो पदार्थको आफ्नो स्वभाव (आफ्नोपन) कसरी हुन्छ ? यस अनुसार स्वभाव छैन भने परभाव पनि हुँदैन । स्वभावको अपेक्षाले परभाव हुन्छ; परभावको अपेक्षाले स्वभाव हुन्छ । यसकारण सबै भाव पदार्थ निःस्वभाव हो भनी भावना गर्ने गुण । [८ - ९ - १० - ११]

यदि कुनै वस्तुको अपेक्षा गरिँदैन भने कुनै भाव पदार्थ पनि उत्पन्न हुने सम्भव हुँदैन । जस्तै लामोको अपेक्षा गरी छोटो, अस्तित्वको अपेक्षा नास्तित्व र छोटोको अपेक्षा नगरी लामो भन्ने तथा नास्तित्वको अपेक्षा अस्तित्व पनि नहुने हुनाले लामो छोटो तथा अस्तित्व नास्तित्व यी दुवै सच्चा होइन केवल व्यावहारिक सत्य मात्र हुन् यसै गरी एकको अपेक्षा गरी अनेक, अतीतको अपेक्षा अनागत संक्लेशको अपेक्षा व्यवदान, सम्यकको अपेक्षा मिथ्या हुन्छन् । स्वतः हुने होइनन् । जब स्वतः कुनै भावपदार्थ उत्पन्न हुँदैन त्यस्तै परतः पनि उत्पन्न हुँदैन भने भाव पदार्थ सच्चा हो भनी कसरी भन्ने ? यसरी भाव पदार्थरूपी भूत आवेश गराउने परतन्त्र स्वभाव बिलीन भएर जान्छ । [१२ - १३ - १४ - १५ - १६]

यसकारण सबै भाव पदार्थ उत्पन्न भए पनि आपेक्षिक भएको हुँदा अनुत्पन्न हुन, सच्चा होइनन् भनी भावना गर्ने गुण । [१७]

संसारका पदार्थहरूमध्ये रूपस्कन्ध फिंज जस्तो; वेदना स्कन्ध पानीको फोका जस्तो संज्ञा स्कन्ध मृगतृष्णा जस्तो, संस्कार स्कन्ध केराको थाम जस्तो, विज्ञान स्कन्ध माया (जादु, चटक) जस्तो असार तथा आपेक्षिक हुन्, निःस्वभाव हुन्, सच्चा होइनन् भनी भावना गर्ने गुण। [१८]

हाम्रा आँखा कान आदि इन्द्रियले ज्ञान गरेका कुराहरू सच्चा होइनन्, हामी विपर्यास (भ्रम) मात्र देख्छौं। उत्पत्ति भयो भन्नु पनि भान मात्र हो, त्यो प्रामाणिक होइन, ती कृत्रिम हुन् भनी भावना गर्ने गुण। [१९-२०]

ज्ञानले हामीलाई सच्चा हो भन्ने भ्रम उत्पन्न गरी दिने हुन्छ। यसकारण शाश्वतवाद र उच्छेदवादलाई छोडी यी दुइ वादरूपी अन्तले रहित मध्यम मार्गलाई श्री भगवान् बुद्धले अपनाउनु भएको छ। यो मार्ग चतुःकोटि रहित छ। यही भावनाले विज्ञान (चित्त) विषयबाट अनासक्त भई अनिमित्त विमोक्ष सुख लाभ हुन्छ भन्ने भावना गर्ने गुण। [२१ - २२ - २३]

सपनामा बाबु जन्मेको देख्नु, आँखाको रोगले गर्दा एउटै चन्द्रमा पनि दुईटा देखिनु आदि पनि हुन्छन्। ती न भएका होइनन्, तर सच्चा होइनन्। त्यस्तै यी विश्व पनि उत्पन्न भएका हुन्। स्थिति (रहिरहेका) पनि हुन्, नाश भएका पनि हुन्, तर सच्चा होइन जसरी सपनामा उत्पत्ति, स्थिति तथा भङ्ग भएको सच्चा होइन त्यस्तै यो विश्व पनि हुन् भनी भावना गर्ने श्री भगवान् बुद्धको गुण। [२४ - २५ - २६]

यसैगरी राग, द्वेष आदि र सुख, दुःख, संक्लेश, षड्गति, पुण्य संभार, ज्ञान संभार पूर्ण गर्नु पर्छ भन्ने उपदेशमा पनि आसक्त हुनु हुँदैन भन्ने व्यक्त गर्ने यी उपर्युक्त उपदेश पनि सपना समान हुन् भन्ने श्री भगवान् बुद्धको गुण। [२७]

उत्पत्ति भयो, उत्पत्ति भएन, आयो गयो, संसारिक बन्धनमा पर्‍यो मुक्त भयो भन्ने विकल्प (भेदभाव) मा नपर्ने श्री भगवान् बुद्धको गुण। [२८]

जादु गरी उत्पन्न भएको हात्ती, सच्चा उत्पन्न भएको होइन, त्यस्तै यो विश्व पनि सच्चा उत्पन्न भएको होइन भने यसको निर्वृत्ति (निर्वाण) के को हुन्छ भनी उत्पत्ति र निरोधमा आसक्त नहुने गुण। (२९-३०)

असंख्य लोकनाथहरूले असंख्य जनतालाई निर्वाण गराउनु भयो भनी धेरै ठाउँमा उल्लेख भएको भए पनि कसैलाई पनि मुक्त गर्नु भएको छैन। किनभने ती लोकनाथहरू र ती जनताहरू उत्पन्न भएका नै होइनन् भन्दा श्री भगवान् बुद्धको प्रसन्न हुनुहुने गुण। [३१—३२]

जादुगरले जादु गरी उत्पन्न गरेको वस्तु सच्चा होइन। त्यस्तै यो संसार पनि सच्चा होइन। तथा जादुगर पनि सच्चा होइन किनभने जादुगर पनि अरूद्वारा बनेको हुन्छ। यसरी कर्ताको पनि कर्ताको परम्परा अनन्त हुन्छन् ती सबै सच्चा होइन भन्ने भावना गर्ने गुण। [३३ - ३४]

नाउँ र नाउँ भएको वस्तु भिन्नै होइनन्। त्यसकारण यो जगत् संसार नै नाउँ मात्र हुन्। नाउँ भनेको कल्पना मात्र हुन् कल्पना भनेको सच्चा होइन। यसकारण संसार शून्य हो भनी भावना गर्ने गुण। [३५-३६]

छ, छैन भन्ने भाव र अभावमा आसक्त नहुनु तथा ज्ञान र ज्ञेयमा आसक्त नहुनु, एक वा अनेकमा आसक्त नहुनु नै निर्वाण हो, अनालय हो, अव्यक्त हो, अचिन्त्य हो, अनिदर्शन हो, भनी भावना गर्ने श्री भगवान् बुद्धको गुण। [३७-३८]

यस्तो निर्वाण नै उदय र व्ययले रहित हुन्छ। उच्छेद र शाश्वत दृष्टिले रहित हुन्छन्। अव्यक्त र व्यक्तले रहित हुन्छन् अक्षर स्वभावका हुन्छन् भन्ने गुण। [३९]

यसकारण प्रतीत्यसमुत्पाद नै शून्यता हुन्। शून्यता नै सद्धर्म हुन, सद्धर्म नै तथागत हुन् भनी उपदेश गर्ने गुण। [४०]

शून्यता नै तत्त्व हो, परमार्थसत्य हो; त्यही सच्चा द्रव्य हो, झूठ होइन भनी बुझ्नु श्री भगवान् बुद्धको गुण। [४१]

शून्यताको दृष्टिमा बुद्ध तथा अरू जनतामा भेद छैन भनी आफू र पराइलाई समान देख्ने भगवान् बुद्धको गुण। [४२]

भाव पदार्थ र शून्यता भिन्नै होइन। शून्यता बिना भाव पदार्थ हुन सक्दैन। त्यसकारण प्रतीत्यसमुत्पन्न भाव पदार्थलाइ शून्य भनी भावना गर्ने श्री भगवान् बुद्धको गुण। [४३]

हेतु प्रत्ययबाट उत्पन्न भएका वस्तुलाई संवृतिसत्य भनिन्छ। ती वस्तु पराधीन भएको हुनाले परतन्त्र हुन्छन्। तर परमार्थसत्य अकृत्रिम हुन्छन्। परमार्थसत्यलाई नै स्वभाव प्रकृति, तत्त्व, द्रव्य, वस्तुसत्य भनिन्छ। यसमा कुनै भेदभाव हुँदैन। तर संवृत्तिसत्यमा भने भेदभाव रहेको हुन्छ। [४४ - ४५]

छ भनी कल्पना गर्नु समारोपवाद (शाश्वतवाद) भनिन्छ छैन; भनी कल्पना गर्नु अन्तवाद (उच्छेदवाद) भनिन्छ। तत्त्व ज्ञानमा न उच्छेद रहन्छ न त शाश्वतता नै रहन्छ। यी सर्व जगतसंसार मृगतृष्णा समान हुन न छ; न त छैन भनी भावना गर्ने श्री भगवान बुद्धको गुण। [४६ - ४७ - ४८]

कुनै भाव पदार्थको उत्पत्ति मान्दा उत्पत्तिको साथ साथै स्थिति; भङ्ग (नाश) पनि मान्नु पर्ने हुन्छ। यसरी मान्दा यो संसार अन्तवान्, तथा अनन्तवान् भनी मान्नु पर्ने हुन्छ। त्यसो हुँदा श्री भगवान् बुद्धले यसलाई अव्याकृत भनी आज्ञा हुनु पनि विशेष गुण हो। [४९]

ज्ञानको अपेक्षा ज्ञेय (जानिने वस्तु) उत्पत्ति हुन्छ तथा ज्ञेयको अपेक्षा ज्ञान उत्पत्ति हुन्छ। यसरी परस्परको अपेक्षाले बनेका ज्ञान तथा ज्ञेय दुवै सच्चा उत्पन्न भएको होइन भनी बुझ्नु श्री भगवान् बुद्धको गुण। [५०]

माया (जादु) सपना, मृगतृष्णा आदि दृष्टान्तद्वारा भाव पदार्थको आसक्ति हटाउन तथा अनिमित्त विमोक्ष लाभ गराउन अत्युत्तम निःस्वभावको देशना गर्नु पनि श्री भगवान् बुद्धको महत्त्वपूर्ण गुण। [५१ - ५२]

निःस्वभाव देशना नै धर्म यज्ञ हो, अनिमित्त भावना हो, धर्मनैरात्म्य

सिंहनाद हो; धर्मभेरी हो; धर्मशङ्ख हो, बुद्धको संपत्ति हो तथा उपदेशामृत हो। यही नै शून्यता हो, नीतार्थ हो। [५३ - ५४ - ५५ - ५६]

उत्पत्ति निरोध आदि देशना तथा सर्वज्ञत्व आदि देशना त नेयार्थ हुन्, संवृतिसत्य मात्र हुन् भनी प्रज्ञापारमितकाको रहस्य बुझ्न सक्ने व्यक्तिले नै श्री भगवान बुद्धको पुण्य तथा गुणलाई बुझ्न सक्छन्। [५७-५८]

यसरी यो अचिन्त्य स्तवमा श्री भगवान् बुद्धको अचिन्त्य गुणहरूको वर्णन तथा भावना गर्ने दिग्दर्शन श्री नागार्जुनले वर्णन गरेका छन्।

— अचिन्त्यस्तव समाप्त —



# परमार्थस्तवको सारांश

श्री भगवान् बुद्ध निर्वाण हुनु भयो। निर्वाण लाभ गर्नु भएको उहाँको स्वभाव तथा गुणहरू यो परमार्थस्तवमा सङ्कलन गरिएका छन् :

अनुत्पन्न, अनासक्त, लौकिक उपमा रहित, अनिर्वचनीय श्री भगवान् बुद्धको कसरी स्तुति गर्न सकिएला ? तथापि तथता (प्रतीत्यसमुत्पाद) को विषयलाई लिएर लौकिक व्यवहार अनुसार स्तुति प्रस्तुत गरिएको छ। (१-२)

निर्वाण अनुत्पन्न स्वभावको हुन्छ। त्यसकारण निर्वाण लागी श्री भगवान् बुद्धको उत्पत्ति छैन, न त यस संसारमा आना जाना नै छ। श्री भगवान् बुद्धको कुनै भाव पदार्थसंग संवन्ध छैन। त्यसकारण हजूर अभावको हुनुहुन्छ। यसो भन्दा श्री भगवान् बुद्ध छैन भन्ने भाव उत्पन्न हुन सक्छ। तर श्री भगवान् बुद्ध न भाव हो न त अभाव नै हो, न शाश्वत हो न त उच्छेद नै हो, न नित्य हो, न त अनित्य नै हो, त्यसकारण उपर्युक्त भेदभाव नभएको अद्वय स्वभाव नै उहाँको वास्तविक स्वभाव हो। (३-४)

श्री भगवान् बुद्धले रातो, नीलो, हरियो, आदि कुनै वर्णको पनि निमित्त ग्रहण गर्नु हुन्न। त्यसकारण उहाँ अवर्ण स्वभावको हुनुहुन्छ। तथा श्री भगवान् बुद्धले लामो, छोटो, ठूलो, सानो, गोलो भनी निमित्त ग्रहण गर्नु हुन्न। त्यसकारण उहाँ अप्रमाण स्वभावको हुनुहुन्छ। (५-६)

श्री भगवान् बुद्धको संसार निर्वाणमा पनि आसक्त हुनुहुन्न, न त उहाँ टाढा तथा नजिकमा रहनु हुन्छ। न त आकाशमा तथा पृथ्वीमा रहनु हुन्छ। अतः

उहाँ अस्थित स्वभावको हुनुहुन्छ। यसरी सम्पूर्ण पदार्थमा न रहे पनि धर्मधातु (प्रतीत्यसमुत्पाद) स्वरूपको भएको हुँदा उहाँको स्वभाव परम गम्भीर छ। (७-८)

परमार्थ स्वरूप श्री भगवान् बुद्धको यसरी स्तुति गर्दा संवृतिसत्य (व्यावहारिक सत्य) को अनुसार स्तुति भएतापनि परमार्थसत्य अनुसार संपूर्ण भाव पदार्थहरू प्रतीत्यसमुत्पन्न भएको हुँदा शून्य नै हो। त्यसकारण स्तुति पात्र हुनु भएका श्री भगवान् बुद्ध पनि शून्य नै हो। स्तुति गर्ने व्यक्ति पनि शून्य नै हो। यसकारण उदय व्ययरहित आदि अन्त तथा मध्यरहित, म, मेरो भन्ने ग्राह्य ग्राहक भाव न भएको श्री भगवान् बुद्धको स्तुति कसले गर्न सक्ला? यसरी यसलोकमा आना जाना नभएका सुगत बुद्धको प्रज्ञापारमिता भावना (विपश्यना) वृद्धि गरी बुद्धत्व लाभ गर्न सकिन्छ भन्ने स्तोत्रकार श्री नागार्जुनको भाव हो। (९-१०-११)

—परमार्थ स्तव समाप्त—



# लोकातीत स्तवः

लोकातीत ! नमस्तुभ्यं विविक्तज्ञानवेदिने ।
यस्त्वं जगद्धितायैव खिन्नःकरुणया चिरम् ॥१॥

स्कन्धमात्रविनिर्मुक्तो न सत्त्वोऽस्तीति ते मतम् ।
सत्त्वार्थं च परिखेदमगमस्त्वं महामुने ॥२॥

तेऽपि स्कन्धास्त्वया धीमन् धीमद्भ्यः संप्रकाशिताः ।
मायामरीचिगन्धर्वनगरस्वप्नसंनिभाः ॥३॥

हेतुतः संभवो येषां तदभावान्न सन्ति ये ।
कथं नाम न तत्स्पष्टं प्रतिविम्बसमागताः ॥४॥

भूतान्यचक्षुर्ग्राह्याणि तन्मयं चाक्षुषं कथम् ।
रूपं त्वयैवं ब्रुवता रूपग्राहो निवारितः ॥५॥

वेदनीयं विना नास्ति वेदनातो निरात्मिका ।
तच्च वेद्यं स्वभावेन नास्तीत्यभिमतं तव ॥६॥

संज्ञार्थयोरनन्यत्वे मुखं दह्येत वह्निना ।
अन्यत्वेऽधिगमाभावस्त्वयोक्तो भूतवादिना ॥७॥

कर्ता स्वतन्त्रः कर्मापि त्वयोक्तं व्यवहारतः
परस्परापेक्षिकी तु सिद्धिस्तेऽभिमतानयोः ॥८ ॥
न कर्तास्ति न भोक्तास्ति पुण्यापुण्यं प्रतीत्यजम् ।
यत्प्रतीत्य न तज्जातं प्रोक्तं वाचस्पते ! त्वया ॥९॥
अज्ञाप्यमानं न ज्ञेयं विज्ञानं तद्विना न च ।
तस्मात्स्वभावतो न स्तो ज्ञानज्ञेये त्वमूचिवान् ॥१०॥
लक्ष्याल्लक्षणमन्यच्चेत्स्यात्तल्लक्षणमलक्षणम् ।
तयोरभावोऽनन्यत्वे विस्पष्टं कथितं त्वया ॥११॥
लक्ष्यलक्षणनिर्मुक्तं वागुदाहारवर्जितम् ।
शान्तं जगदिदं दृष्टं भवता ज्ञानचक्षुषा ॥१२॥
न सन्नुत्पद्यते भावो नाप्यसन्सदसन्न च ।
न स्वतो नापि परतो न द्वाभ्यां जायते कथम् ॥१३॥
न सतः स्थितियुक्तस्य विनाश उपपद्यते ।
नासतो ऽश्वविषाणेन समस्य समता कथम् ॥१४॥
भावान्नार्थान्तरो नाशो नाप्यनर्थान्तरो मतः ।
अर्थान्तरे भवेन्नित्यो नाप्यनर्थान्तरे भवेत् ॥१५
एकत्वे हि भावस्य विनाश उपपद्यते ।
पृथक् केन हि भावस्य विनाश उपपद्यते ॥१६॥
विनष्टात् कारणात्तावत्कार्योत्पत्ति नं युज्यते ।
न वाविनष्टात्स्वप्नेन तुल्योत्पत्तिर्मता तव ॥१७॥
निरुद्धाद्वानिरुद्धाद्वा बीजादङ्कुर संभवः ।

मायोत्पादवदुत्पादः सर्व एव त्वयोच्यते ॥१८॥

अतस्त्वया जगदिदं परिकल्पसमुद्भवम् ।
अपरिज्ञातमसद्भूत मनुत्पन्नं न नश्यति ॥१९॥

नित्यस्य संसृतिर्नास्ति नैवानित्यस्य संसृतिः ।
स्वप्नवत्संसृतिः प्रोक्ता त्वया तत्त्वविदां वर ! ॥२०॥

स्वयंकृतं परकृतं द्वाभ्यां कृतमहेतुकम् ।
तार्किकैरिष्यते दुःखं त्वया तूक्तं प्रतीत्यजम् ॥२१॥

यः प्रतीत्यसमुत्पादः शून्यता सैव ते मता ।
भावः स्वतन्त्रो नास्तीति सिंहनादस्तवातुलः ॥२२॥

सर्वसंकल्पहानाय शून्यतामृतदेशना ।
यस्य तस्यामपि ग्राह स्त्वयासाववसादितः ॥२३॥

निरीहावशिकाः शून्या मायावत्प्रत्ययोद्भवाः ।
सर्वधर्मास्त्वया नाथ ! निःस्वभावाः प्रकाशिताः ॥२४॥

न त्वयोत्पादितं किञ्चिन्न किञ्चिच्च निरोधितम् ।
यथा पूर्वं तथा पश्चात्तथतां बुद्धवानसि ॥२५॥

आर्यैर्निषेवितामेवमनागम्य हि भावनाम् ।
अनिमित्तस्य विज्ञानं भवतीह कथंचन ॥२६॥

अनिमित्तमनागम्य मोक्षो नास्ति त्वमुक्तवान् ।
अतस्त्वया महायाने तत्साकल्येन देशितम् ॥२७॥

यदवाप्तं मया पुण्यं स्तुत्वा त्वां स्तुतिभाजनम् ।
निमित्तबन्धनापेतं भूयात्तेनाखिलं जगत् ॥२८॥

